THE "KHOJI" Regd. No.

# खोजी

मासिक पत्र

सम्पादक—
श्रीरूपनारायण सिंह, बी. ए. बी. एल.,

वर्ष १ ] सितम्बर १९४० [ अंक १



## सम्पादकीय

### खोजी

हामी खोजी गर्न तयार भएका छौं। हामी केही जान्दैनौं। साहित्य हाम्रा निम्ति गहिरो समुद्र छ—विज्ञान सित हाम्रो परिचय छैन। कलाको ज्ञान हामीलाई छैन, संसारका इतिहासको बोक्रो पनि हामीले [illegible] सकेका छैनौं।

सभ्यता र संस्कृति आज हाम्रा ढोकादेखि धेरै टाढ़ा छन्।

तर यस्तो टीठ लाग्दो अवस्थामा पनि खोजी गरेर हामी को हौं, कहाँ छौं, किन यस्ता अवस्थामा छौं [illegible] यस्ता [illegible] विचार हाम्रा मनमा बेला बेलामा उपज्छन्—घनघोर काला बादलले छोपेका आकाशमा बिजुली बेला बेलामा चम्केको जस्तो।

यस्तै विचारले घचेटेर 'खोजी' छाप्ने काममा हामीलाई अघि सारेका हुन्।

आफु सित भएका ज्ञान र बुद्धिले हामी खोजी गर्ने चेष्टा गर्छौं—समाजका विद्वान् र भाषासेवीहरूलाई हाम्रो यो खोजीमा मदत गर्ने विन्ती गर्छौं।

खोजी गरे संसारमा न पाइने थोक केही छैन।

—सम्पादक

> **शुभेच्छा**
>
> फूलोस्, होओस्, कुसुमित सर्दा, बास मीठो चलाई।
> आओस्, चाखोस्, मधुकर बसी, मोजको गान गाई॥
> हाँसोस्, नाचोस्, हृदय [illegible]
> खोजोस्, रोजोस्, अवनितलमा, विश्वको ज्योतिलाई॥
>
> श्री रामानन्द मोक्तान, साल्टहिल,
> दार्जिलिङ

## दार्जिलिङ गोर्खा दुःख निवारक सम्मेलन

धेरै कालदेखि दार्जिलिङमा टाड़ा टाड़ादेखि आई बेवारिश भई मर्ने गोर्खाली तथा अन्य जातिका मानिस-हरूको लाश डूम तथा मेहतरहरूले राम्ररी न ढाकी दस ठाउँ खसाउँदै लैजान्थे। स्वजातिको बेवारिशे लाशको यो अवस्था देखी धेरै युवकको हृदय रून्थ्यो। यही आँसुले गर्दा १९३२ सालमा गोर्खा दुःख निवारक सम्मेलनको दार्जिलिङमा जन्म भयो।

स्थापित भएदेखि सम्मेलनले बेवारिश लाशको पूर्ण संस्कार गर्दै छ। अनाथालय खोली धेरै अनाथहरूको पालन पोषण गर्दै छ। तिनीहरूका शिक्षामा सम्मेलनको विशेष ध्यान छ।

कलकत्ता, सिलचर ( आसाम ), खरसांग, पंखाबारी र लोधोमामा सम्मेलनका शाखाहरू छन्। सबैको नाम अनुसार काम भई रहेको छ।

सम्मेलनले यौटा स्वतंत्र भवन बनाउनाकालागि दुई चार पैसा बटुल्दै छ। लड़ाईंले सबै थोकोका दाम बढेका हुनाले विगत वर्ष भवन-निर्माण कार्य्यमा हात हाल्न सकिएन।

( दार्जिलिङ गोर्खा दुःख निवारक सम्मेलनले जूलाई १९४० मा जति काम गर्‍यो, पेज ८ मा देखाइएको छ। )

# लडाइँ र हामी

[ श्रीपारस मणि प्रधान, दार्जिलिङ ]

यूरोपमा लडाइँ भइ रहेको छ तर जस जसका हातमा यो अखबार पर्ला उनीहरू मध्ये थोरैले मात्र यो लडाइँको तत्त्व बुझेका होलान् । हामी युद्धभूमि बाट धेरै टाढ़ामा छौं । हामीले न तोपको आवाज सुंन्नु परेको छ न लडाइँको त्यो दृश्य हेर्नु परेको छ । हामी एक हिसावले सुखमा छौं । तर सुखमा छौं भनेर कानमा तेल हालेर बस्ने अवस्था भने छैन । किनभने हाम्रो सुखको अवस्था माथि डाही गरेर हिटलरले मनपरी गरी संसारलाई आफ्नो वशमा गराउन खोज्दै छ । हामी स्वतन्त्र छौं, ऊ हामीलाई उसको अधीनमा राख्न चाहन्छ । हामीलाई आफ्ना मनमा लागेका कुनै कुरा वा काम गर्ने छेक थून छैन, ऊ हामीलाई बन्धनमा राख्न चाहन्छ । हामी सभ्य संसारले गरे झैं काम गर्न चाहन्छौं, हिटलर हामीलाई असभ्यता सिकाउन खोज्छ । नाजी राज्य राक्षसी-राज्य होइन भनी कसले भन्छ ?

यो युद्ध अरु बेलाका युद्ध जस्तो होइन । यो युद्ध मानिस सित मानिसको युद्ध होइन यो ता सभ्यता र असभ्यताको युद्ध हो; यो ता स्वतन्त्रता र परतन्त्रताको युद्ध हो । यसलाई हामी "धर्म युद्ध" भन्न सक्छौं । हाम्रा सरकारले शत्रुहरूको विनाश गर्न खोजेको धर्मका निम्ति हो । हिटलरको उद्देश्य ता पापको राज्य फैलाउने उद्देश्य हो, यसमा अलिकता पनि सन्देह छैन । किन्तु आफूलाई संसारमा सर्वश्रेष्ठ हुँ भन्न चाहन्छ । यो उसको स्वार्थ हो, अहंकार हो, दुष्टता हो ।

## खोजी

[ श्रीबुद्धिमान् स्याङ्दन, सिंहमारी, दार्जिलिङ ]

आ ! खोज स्वागत छ तँलाइ आ !
घर घरमा दिव्य दीपक जला ;
सुसन्देश खोज डङ्का बजा ,
रोज, रोज खोज कविता नचा ॥ १ ॥

मयूख मयूखमा खोज, खोज ,
सनसनी मलयानिलमा खोज ;
मार्तण्ड प्रचण्ड छिपे खोज ,
कुमुदिनी सौरभ बीच खोज ॥ २ ॥

तरु, लता द्रुम सम्पूर्ण खोज ,
मणि-हार-कान्ति हिमालय खोज ;
भँवरा भै खोज, सरोज खोज ,
कल कल सरिता सरोवर खोज ॥ ३ ॥

झर झर मृदु झरना बीच खोज ,
पुष्प पराग छिपे खोज, खोज ;
कोयल-कण्ठ छिपे हेर, खोज ,
उद्देश्य जीवनका यहीं खोज ॥ ४ ॥

रावण आफूलाई अजेय हुँ भनी ठान्थ्यो । त्रिलोकको मालिक मै हुँ भन्ने अहंकार गर्थ्यो । त्यसको दुष्टताको सीमा थिएन । अहंकारका वशमा परी देवताहरूसँग युद्ध गर्ने भएको थियो । त्यसले कपट युद्ध गरी देवराजलाई कैद सम्म गरेको थियो, पृथ्विलोकका प्रायः समस्त नै राजाहरूलाई जितेको थियो । असाध्य अत्याचारी र अधर्मपरायण भएर रावणले देवकन्या, दानवकन्या, ऋषिकन्याहरूलाई हरण गरी मनपरी गर्‍यो । तर कति दिन ? रावण अमर थियो तर आखिरमा त्यसले मर्नु पर्‍यो; त्यसले आफ्ना अत्याचारको फल भोग्नु पर्‍यो । रामराज्य रामराज्य नै रह्यो । धर्मको जय भयो, अधर्मको क्षय भयो । "विनाशकाले विपरीत बुद्धि" भन्ने उखान हिटलरलाई थाहा छैन ? नत्र त्यसले यो औधि गर्ने थिएन !! धर्म युद्धमा स्थिर रहने युधिष्ठिरको जय न भई दुष्टमती लिने दुर्योधनको जय भएको कुरा हामीलाई थाहा छैन । जुन दृष्टिबाट हेरे पनि आखिरमा धर्मको जय हुन्छ ।

अब हामीले गर्ने के तब ? धर्मको जय हुन्छ भनेर हनुमान् चूप लागेर बसेनन् , भीमले आफ्नो गदा थन्क्याएनन् । यो अखबार पढ्ने हामी न हनुमानै हौं न भीम । तर हामी तिनका भक्त अवश्य हौं, तिनका अनुरक्त अवश्य छौं । हामीले भक्ति मात्र प्रदर्शन गरे पनि यस धर्मयुद्धमा हाम्रा सरकारलाई ठूलो सहायता हुनेछ, ठूलो आड़ हुनेछ ।

भक्ति प्रदर्शन गर्ने उपाय अनेक छन् । पत्र-पुष्प-फल-पानी जेले पनि परमेश्वर खुश हुन्छन् तर भक्तिले अर्पण गर्नु पर्छ । भक्तिमा लीन भएर कसैले प्राण अर्पण गर्छन् , कसैले धन अर्पण गर्छन् , फेरि कसैले तन अर्पण गरे कसैले मन अर्पण गर्न सक्छन् । जसरी जे अर्पण गरे पनि अहिले हामीलाई चाहिएको छ भक्ति; किनभने भक्तिमा ठूलो शक्ति लुकेको हुन्छ । शत्रुहरू अनेक उपायले हाम्रो यो भक्ति भङ्ग गर्ने उद्योगमा छन् । उनीहरू बलले, छलले नाना तरहले हाम्रा यो अटल भक्तिलाई क्षीण गराउन चाहन्छन् । यसमा हामीले होश राख्नु पर्छ । 'कागले कान लग्यो' भन्दैमा कान न छामी काग तिर दगुर्न हुन्न । अर्थात् शत्रु तर्फबाट आएका झूठा खबर हामीले पत्याउनु हुँदैन । यस्तो खबर प्रचार गर्ने ता सरासर शत्रुपक्षमा लाग्नु हो ।

देशका दाजु-भाइ, दिदी-बैनी हो ! 'ज्यान कि जीत, दुइ थोकमा एक थोक हाम्रो' भनी सरकारले कम्मर कसेका छन् । घरका बाबुले जुन काममा कम्मर कस्छन्, उनका छोरा छोरीले सो काममा कम्मर कस्नु स्वाभाविक हो । राजा-प्रजा ता एक घरका जहान हुन् । यस बेला घर झगड़ामा लाग्नेहरूको दुर्दशा न भई छोड्ने होइन । यस कारण आउनु होस् एक मतका भई घरको रक्षा गरौं । जसले जुन हिसावले जति सक्छौं उति मदद गरौं । तनले मनले धनले जनले भक्ति प्रदर्शन गरौं । यो हो राजभक्ति, यो हो देशभक्ति । यो लडाईंलाई चाहिएको पनि छ "भक्ति"

# खोजी

[ श्रीइन्द्र सुन्दास, दार्जिलिङ ]

सूर्य्यका किरणद्वारा समुद्रबाट उठेका बाफ मौसमी वायुको जोड़ले उड़ाएर घुमाउँदै फिराउँदै मेघका रूपमा परिणत भई सीधा उत्तर हिमालय पर्वत पार गर्न न सकी पहाड़देखि बर्षिएर तल मदेश खण्ड सम्म पुग्छन्। यति वर्षिएर चुपचाप बसे पनि ता हुन्थ्यो, तर होइन, यी बर्षिनासाथ सकसकिएर के गरौं, कसो गरौं, यत्तिकै यहीं बिचलित भएर बस्नु ता हुन्न भनी, सजिला ठाउँमा सजिलै गरी, अफठ्यारा ठाउँमा जोड़ तोड़ गरी अनेकौं मार्ग लिई आफ्ना आफ्ना नाताका खोजमा लागि हाल्छन् । यी बर्षिए, तलतलिएर नाता खोज्न लागे, पाए पनि नाता—झोड़ामा, खोलामा, नदी-मा । यिनको साहस बढ्यो, महारूप भयो, अब यिनलाई चलाउन सक्ने कसले ? यिनलाई त्यसै पार गर्न सक्छु भन्ने आँट गर्न सक्ने कसले ? शुरूका ती झ्याउरे नाउँले यिनलाई कसले बोलाउने ? ठूड़े २ नाउँका धनी भए, अब यिनको जस्तो नाउँ बढ्यो, उस्तै मान पनि बढ्यो, इज्जत पनि बढ्यो, संसा-रमा अति प्रसिद्ध पनि भए। मान पाए, इज्जत बढ्यो, प्रसिद्धि प्राप्त गरे—अब के—भई गो ? होइन, अझ पनि बाँकीनै छ भनी उत्साहपूर्वक यी समय २ मा आवश्यक परेका ठाउँमा विद्रोह पनि मच्चाउँदै महत् संगठनको लक्ष्य सिरमा चढ़ाई यो चाँढ़ी हुनै पर्छ भन्ने दृढ़ संकल्प लिई त्यसैका खोजमा लाग्छन् । अन्त्यमा तिनका उत्साह, पराक्रम, इत्यादिका जोड़ले त्यो पनि प्राप्त हुन्छ । सबै समुद्रैमा पुग्छन्, अब यिनको संगठन भयो, यिनको मनोकामना पूरा भयो, अब यिनका छेउमा पुग्न को सक्ने ? यिनको संहार गर्न कसले सक्ने ? यिनमा केही कुराको कमी रहेन—शक्ति, सम्पत्ति इत्यादि भरपूर छन् । संसारका बहुमूल्य जिनिस् यहाँ प्राप्त हुन्छन् । कहाँका ती न पत्याउँदा भारेभुरे झोड़ा—कहाँका अहिले अगम्य समुद्र ! खोज गर्नाका लागि ती भारेभुरे झोड़ा अचल भई बसे न यत्रो रूप धारण गर्ने थिए, न यत्रो महा संगठननै हुने थियो ।

## खोजी

खोज खोज कहाँ के छ ,
के कहाँ को कहाँ थिए ?
नेपालीका जति जे हुन् ,
जहाँ जे जहिले थिए ॥ १ ॥
गर्नु पर्ने कहाँ के हो ,
कहिले कसरी कति ?
खोज, खोजेर पाइन्छ ,
जहाँ जे जसले जति ॥ २ ॥

श्रीपारस मणि प्रधान

यो ता भयो प्राकृतिक खोज, त्यस पछि संगठन—अब एक अर्को विचित्र तर परम संगठनको कुरो रह्यो तर यसको वास्ता चाहीं बहुतै कमले गरेको बुझिन्छ—त्यो हो आत्मिक संगठन । सबै प्राणीहरूका आत्मा छन्—तिनलाई चित्त एकाग्र भै कोशिश गर्ने विरलै पाइए ता पनि त्यसैका खोज साधनमा लागी सफल हुनेले कत्रा चमत्कार देखाएका छन् , कसता शक्तिशाली, तेजस्वी भएका छन् । हरएक आत्मा परमात्माको एक अंश हो, यो अंश परमात्मा अन्तर्गतनै छ, अर्थात् यी सबै अंशको संगठित रूप परमात्मा हो, तर परमात्मा र मानसिक आत्मा भिन्नै हुन् भने जस्तो लाग्छ । माझमा अहंकार छ । यो अहँकाररूप हटी दिएका दिन अंश-आत्माको परमात्मा संग योग भई अत्यन्त आनन्द प्राप्त हुने छ ।

यस जिल्लामा कैयौं पत्रिकाहरूको जन्म भयो, तर सह्यारै न पुगेर हो क्यार सानै उमेरमा एक २ गरी भका-भक मरी शून्य बनाएर गए । शून्य भएका समयमा आज "खोजी" को जन्म भई रहे छ, सबै हर्षित छन् ,सबैले आशा राखेका छन्—यो समस्त मुलुक भरि भएका, पाला-भित्ता, गाउँ-बस्ती, उत्तर पूर्व चारै दिशा, आफ्नी जन्मभूमि तथा भारतवर्ष औ अन्य २ स्थानमा फिंजिएर बसोबासो गरेका नेपालीहरूका खोजमा लागी घर घरमा ढक् ढक्याउन पुगोस् । सबैहामी एकै घरका भाइहरू हौं, हामीहरूमा केही भेदभाव न रहोस् , स्वार्थ हटोस् , सबैमा प्रेम बढ़ोस् भन्ने चेतना दिई समस्त नेपालीहरूको संगठन, एक दरिलो संगठन गराओस् । गुप्त रूपमा परी रहेका ठाउँ २ मा अहिले नेपालीका कति अमूल्य रत्न होलान् , तिनको मूल्य को जान्ने ? तर ती सबका खोजमा आज "खोजी" आफ्नो यात्रा आरम्भ गरी रहेछ । ती सबलाई एक २ गरी खोजी निकाली सभ्य संसारमा प्रकाश गराई स्वयं सभ्यताको घमण्ड गर्न सक्ने छ भन्ने सबको आशा छ । दुखीहरूको दुःख प्रकट् गरी तिनको निवारण गर्नामा पनि भरसक सहायता दिनेछ भन्ने, अन्धकारमा परी रहेकाहरूका नेत्र उघारी देला भन्ने, सबैलाई आँट भरोस् दिई उत्साहित गराई, ती पुराना भय, ढाँचा हटाई सभ्यताको सुमार्ग पट्टि लाउने छ भन्ने सबैले विचार राखेका छन् । समुद्र जत्रो संगठन गराउने प्रत्येक नेपालीको लक्ष्य हुनु पर्‍यो, समय लाग्छ, यसर्थ आजै सक्सकिएर न थाली भएन । एक दिन निश्चय संगठित हुने छौं, तब अंश-आत्मा र परमात्माका योगले जो आनन्द प्राप्त हुने छ, सो त्यही दिन हामीमा हुने छ । "खोजी" ! आशा ठूलो लिएका छौं, भरोसा पनि—तिमीले सोही पुर्‍याउन नितान्त आवश्यक छ ।

---

# प्राथमिक पाठशाला

[ श्रीकांजीमान राई, दार्जिलिङ ]

दार्जिलिङ जिल्लाका धेर जसा प्राथमिक पाठशालाहरू मिशनरीहरूका हातमा छन्। यसो दस वर्ष देखि डिस्ट्रिक्ट बोर्ड, म्युनिसिपालिटी र अरू शिक्षा प्रचारकहरूले पनि पाठशाला खोली चलाउन लागी रहेछन्। प्रारम्भमा यी पाठशालाहरूमा हिन्दी भाषाका पुस्तकहरू पढ़ाई हिन्दीकै माध्यमद्वारा शिक्षा दिइन्थ्यो। अहिले ५ वर्ष भयो सर्कारबाट नेपाली माध्यम स्वीकृत भई प्राथमिक पाठशालामा नेपाली भाषामा शिक्षा दिन लागी रहेछन्। हिन्दी र नेपाली भाषाका माध्यमद्वारा शिक्षा दिंदा धेरै अन्तर पर्ने रहेछ भन्ने कुरो स्पष्ट प्रकट हुन्छ। किनभने दार्जिलिङ जिल्लाका अधिकांश निवासी नेपाली भाषामै आफना मनोभाव प्रकट गरी आफना दैनिक काम चलाउँछन्। औ विशेषतः नेपालीहरूले ता आफ्ना मातृभाषामा पाठ्य पुस्तक पढ़न् पाउँदा सजिलै सित पाठका अर्थ बुझी आफ्ना भाषामा व्यक्त गर्न सक्छन्। संसार भरि प्राथमिक पाठशाला सम्म ता आफ्नै मातृभाषामा शिक्षा दिइन्छ। तर यस जिल्लामा चाहिं मिशनरी साहेबहरू मधेसबाट हिन्दी पढेर यहाँ आई हिन्दीमै यहाँका निवासीहरूलाई शिक्षा दिन लागे। "यह मत लो पर वह दो" भन्ने पहिला पुस्तकमा पढेको अझ सम्म झलझलि सम्झना हुन्छ। त्यति बेला मैले र मेरा क्लासका साथीहरूले ता "पर वह दो" भनेको "परेवा दो" भन्ने सम्झेका थियौं। पढ़दा पनि "परेवा दो" भनेर नै पढ़थ्यौं। नेपाली र हिन्दी भाषामा शिक्षा दिंदा कतिको अन्तर हुँदो रहेछ यसबाट थहा हुन्छ।

## स्वागत गान

फिरदा पढ़ि अङ्गलभूमि गई,
मन रञ्जन भो (२) ॥ टेक ॥

बरसा ऋतुनै लिइ अर्घ्य अघी,
कुइरो गुंथि हार बनाइ वरी;
हिम-पुत्रकन हिमपूर विशे,
छ सुआगत गर्न सुशैल विशे।

हरिला भरिला द्रुम पल्लव यी,
लिइ पुष्प खडा छन शैल भरी;
मृदु मन्द समीर मधुमुर्रली,
फुकि गर्छ सुआगत आइ अघी।

तरुशाख भरी विहगादि पनी,
छन नृत्य महा सब मग्न अती;
तर चित्त मम अझ खूशि हुदा,
भनदो छ, "सुआगत आज सखा"।

( श्री ए० बी० गुरूंगको स्वागतमा )

अहिले पाँच वर्ष भयो यस जिल्लाका प्राथमिक पाठशालाहरूमा धेरै उन्नति भई रहेको छ। शिक्षा विभागका अफसरहरूले विशेष गरी जिल्लाका डिस्ट्रिक्ट इन्सपेक्टर साहेबले प्राथमिक पाठशालाका विद्यार्थी तथा शिक्षकहरूमा नवीन जीवनको सञ्चार गरी रहेका छन्। बालकहरूका मानसिक शिक्षा बाहेक शारीरिक शिक्षा पट्टि पनि विशेष ध्यान दिन लागी रहेछन्। फूटबाल, हकी तथा स्पोर्टस प्रत्येक प्राथमिक पाठशालाका शिक्षाको यौटा अङ्ग भई रहेछ। १९३९ साल देखि ता पाठशाला दिवस (स्कूल डे) पनि बड़ो समारोहका साथ मनाइँदै छ। यी खेलहरू—विशेष गरी पाठशाला दिवसले शिक्षक शिक्षिका तथा विद्यार्थीहरूमा नवीन आन्दोलन उत्पन्न गरी रहेछ। आफ्ना आफ्ना पाठशालाका काम, शासनविधि तथा अन्य बाह्य विषयहरूका शिक्षा जनतामा प्रदर्शन गर्ने अत्यन्त सजिलो अवसर प्राप्त भई रहेछ। बालक, बालिका, शिक्षक, शिक्षिकाहरूका आपस्तमा संगठन हुने र आफ्ना आफ्ना विचार प्रकट गर्ने अवसर पनि प्राप्त हुँदै छ। विद्यार्थीहरूले पनि पाठशाला भित्र थुनिएर पाठ मात्र न घोकी बाहिर प्रकृतिका सौन्दर्य हेर्ने अवसर पाई रहेछन्। तिनीहरूलाई विद्यार्थी जीवन अघि झैं निरस तथा शुष्क न भई रहर लाग्दो र रमाइलो लागी रहेछ। प्राथमिक पाठशालामा पनि 'स्काउट्स' र 'कब्स' विभाग धमाधम आरम्भ हुँदै छन्। प्राथमिक पाठशाला पनि संसारका गति अनुसार चल्न लागी रहेछ। शिक्षकहरूको उत्तरदायित्व पनि अघि भन्दा धेरै बढ्ता भई रहेछ। शिक्षकहरू स्कूलमा १० बजे गएर ३ बजे पछि काम सकियो भनेर निश्चिन्त भई बस्न पाउँदैनन्। साधारण पढ़ाईका काम सकिए पछि बाहिरका अन्य विषयहरूमा गुरू महाशयहरूले आफ्नो समय लाउनै पर्छ। पढ़ाउने विधि पनि आंधुनिक वैज्ञानिक रीति अनुसार प्रचलित हुँदै छ।

प्रत्येक प्राथमिक पाठशालाका गुरू वा गुरूमाले आफ्ना आफ्ना पाठशालालाई आफ्नै घर सम्झी तथा विद्यार्थीहरूलाई आफनै परिवार सम्झी शिक्षा दिनु आफनो मूख्य कर्त्तव्य ठानी गुरू वा गुरूमाका काममा हात हाल्नु सर्वथा उचित देखिन्छ। आफना विद्यार्थीहरूलाई भविष्यमा देशका योग्य नागरीक बनाउनु औ तिनीहरूका दुःख र सुखमा सहयोग गर्नु आफनो कर्त्तव्य सम्झिनु हामी शिक्षकगणको लक्ष्य हुनु पर्छ। शिक्षकहरूको विशेष गरी—प्राथमिक पाठशालाका शिक्षकहरूको आर्थिक अवस्था अत्यन्त शोचनीय छ, यो चाहीं ध्रुव सत्य हो। तर त्यसमाथि विचार न गरी आफनो कर्त्तव्य पालन गरे भविष्यमा त्यसको फल राम्रै हुन्छ। हामी गुरुहरू माथि देश वा जाति सुधारको अत्यन्त गम्भीर औ गहन भार रहन्छ सो यस वृत्तिमा खुट्टा हाले पछि बालकहरूबाट देश वा जाति सुधार हुने यौटा सरल उपाय आफै उपस्थित हुन्छ। हामीले देश-विदेश घुमी व्याख्यान दिन पर्दैन, आफ्ना पाठशालानै संसारको एक अङ्ग सम्झी त्यसै माथि तन, मन, धन लाउनु आफनो कर्त्तव्य ठान्नु पर्छ। यसरी हामी गुप्तरूपले समाज सेवा गरी रहेका छौं। हाम्रा काम अरुहरूले न देखुन् तर हामीले गरेका कामनै यदि त्यो काम निस्वार्थ औ निष्कपट रूपले गर्यौं भने स्थूलरूपमा प्रकट न भएता पनि अदृश्यरूपमा प्रकट हुन्यै छ, यसमा केहि संशय छैन।

गुरुहरूले यो हामीलाई अर्ति दिने कहाँबाट पैदा भए छ भनी न भन्नु होला। यो मेरो अनुभव मात्र पाठकहरूका सामु टक्र्याउने चेष्टा सम्म गरेको हो। मेरा काममा पनि अनेकानेक त्रुटि छन् औ मेरा बुद्धिले भियाए सम्म ती त्रुटिहरू दूर गर्ने यथासाध्य चेष्टा गरी रहने छु। प्रत्येक गुरुले पनि त्यसै गरी आफ्ना आफ्ना पाठशाला सुधार्न गर्ने चेष्टा गर्नु होला भन्ने मेरो सविनय निवेदन छ।

---

## विचित्र बाछो

ता० २९ जूलाई १९४० का दिन कलकत्तामा यौटी गाईले यौटा विचित्र बाछो ब्याई छ। त्यस बाछाको टाउको उँटको जस्तो छ औ त्यसका चार आँखा छन् भन्ने खबर छ। शङ्करजी संग बाजी गर्न जन्मेको ता होइन ?

---

## अश्वत्थामा पो हो कि !

ता० २२ जून १९४० का दिन कलकत्तामा २८″ को पैतालाको डाम देखा पऱ्यो। मानिसहरूले १९३५ सालमा निस्केको तरसाउने होला भने। अर्का दिन डर लागदा हात गोड़ा र पाइला भएको यौटा सात फिट आधा जति अग्लो मानिस बाटामा जाँदै गरेको देखा पऱ्यो। मानिसहरूले पैतालाका डाम हेरे उही अघि झैं। "लौ भूत यही हो" भनी ढुंगा र मुड़ा गर्दै तिनीहरू पछि लाग्नाले विचरो भागेर यौटा थाना भित्र प्राण जोगाउन पुगे छ। पुलिसले सोध पूछ गर्दा ता त्रिपुराका महाराजको अंग रक्षक पो रहे छ। कसो ढुंगा थाप्लामा परेन। बाँच्यो—दिन वलियो रहेछ भन्न पऱ्यो।

---

## माछो माछो भ्यागुतो !

बोलपूरको यौटा सानो गाउँमा धेरै नाती नतिना भएको यौटा ६० वर्षको बुढ़ोले यौटा १४ वर्षकी दुखिया विधवा केटी संग १५-७-४० का दिन विवाह गर्ने ठीक ठाक गरे छ। यो कुरो विश्वभारती श्रीनिकेतनका ग्राम-सेवकहरूका कान सम्म पनि पुगे छ। यता उति गरी बुढ़ोले पत्तै न पाई तिनीहरूले यौटा उत्साही विद्यार्थी श्रीलक्ष्मी नारायण रायलाई चम्काई १५-७-४० कै दिन बुढ़ो भन्दा अघि पुगी त्यो विधवा केटीको विवाह श्रीलक्ष्मीनारायण राय संग गराए छन्। ६० वर्षको बुढ़ो—विवाह गर्ने ध्यानमा—"मरौंला भन्नाको अझ पनि विचार छैन मनको"।

---

## स्वागत

रविवार २१ जुलाई १९४० का दिन बेलुका ४३ बजे स्थानीय हिन्दु पबलिक हलमा बेलायत गई बेरिस्टरी पास गरी आइन्न भएको सर्व प्रथम पर्वतवासी हुनाले श्रीमान् अरिबहादुर गुरुंग महोदय, बी. ए., को स्वागत र सत्कारार्थ पर्वतवासीहरूको यौटा ठूलो सभा श्रीमान् मोतीचन्द प्रधान महोदय, बी. सी. एस., का सभापतित्वमा भयो। उक्त सभामा राय साहेब सी. टेन्डुफला, श्री के. एस. बहादुर, श्री डबल्यु. डी. लेडेनला, श्री पी. के. च्याटर्जी, श्री एन. कुसारी लगायत ५०० जति पर्वतवासीहरू उपस्थित थिए। श्री रणवीर लामा महोदयका स्वागत गान पछि पण्डित धरणीधर शर्माले कविता पाठ गर्नु भयो। श्री ए. जे. देवान, श्रीरूपनारायण सिंह, श्रीमतीचन्द्रकला राई, श्रीअरिबहादुर गुरुंग र सभापति महोदयको भाषण पछि गोर्खा दुःख निवारक सम्मेलनका स्वयंसेवकहरूले यौटा नाटक अभिनय गरे।

श्रीमान् अरिबहादुर गुरुंगको दीर्घायु होस्।

---

हिलमेन्श एशोसिएसनको यौटा साधारण वार्षिक सभा राय साहेब हरिप्रसाद प्रधान महोदय एम ए., बी. एल., का सभापतित्वमा रविवार १८ अगस्त १९४० का दिन टाउनहालमा भयो। तल लेखिएका सदस्यहरू पदाधिकारी छानिए।

| | |
|---|---|
| राय साहेब सी. टेन्डुफला | सभापति |
| श्री रूपनारायण सिंह, बी. ए., बी. एल. | उप-सभापति |
| ,, हस्तलाल गिरी | ,, |
| श्री जे. बी. थापा | मंत्री |
| ,, जे. एस. लामा | उप-मंत्री |

---

तुर्गसुगं बस्तीको सेवक समितिले रविवार १८ अगस्त १९४० का दिन युद्धका चन्दाकालागि स्थानीय हिन्दु पबलिक हालमा, हरिश्चन्द्रको नाटक, डिपुटि कमिश्नर साहेबका संरक्षणमा अभिनय गऱ्यो। उद्योगी संस्थाको यो कार्य्य प्रशंसनीय छ।

---

# शोक

श्रीगोकुलसिंह गहतराज, सब-डिपुटि कलेक्टरको विगत वर्ष देहान्त भयो। वहाँका देहान्त भएको तीन चार महिना भित्रैमा वहाँको कनिष्ठ पुत्रको देहान्त भयो। वहाँकी धर्मपत्नीको पनि मंगलवार १३ अगस्त १९४० का दिन देहान्त भयो। दस महिना भित्रैमा एक परिवारका तीन प्राणीको देहान्त हुनु भारी दुःखको कुरो हो। भगवानले स्वर्गीय आत्मालाई शान्ति दिउन्।

---

# धनमतीको सिनेमा स्वप्न ।

लेखक—रूप ( यस कथाका पात्र पात्रीहरूको नाम जम्मै काल्पनिक हुन् )

( एक )

प्लाजा थिएटरमा 'हन्टरवाली' को बायस्कोप हेरेर धनमतीको एक्ट्रेस हुने विचार भयो। काननबालाले 'विद्यापति' भन्ने फिल्ममा गाएको सुनेर औ अभिनय गरेको देखेर धनमतीले त्यो विचार काममा ल्याउनालाई कम्मर कसीं।

धनमती आजकल दिनमा सये चोटि ऐनामा मुख हेर्छे। कसैले 'धनमती' भनेर बोलाउँदा रिसाउँछे। सिनेमा संसारकी अभिनेत्रीको नाम पनि कसैले धनमती भनेको सुनेको छ? धनमतीले एक्ट्रेस हुने सब भन्दा पहिलो काम गरी। धनमतीले आफ्नु नाम राखी मालती देविका। देवीले मात्रै धनमती सन्तुष्ट भईन र स्कूलका एक दुइ वटा गुरुआमाका देखा सिकी देवीमा 'का' जोड़ेर देविका बनाई। देविकाको अर्थ त्यो जान्दिन, जान्ने चेष्टा पनि गर्दिन।

दिनमा सये चोटि ऐनामा मुख हेरेर धनमती उर्फ मालतीदेविकालाई मनमा पक्का विश्वास भएको छ उसको अनुहारले भारतका सिनेमा संसारमा नाम कमाउँछ। बखते राईकी छोरी धनमतीको अनुहार सुलोचनाको जस्तो छैन—साँचो हो। तर धनमती भरखरकी तरुणी छ। संसारका जम्मै चीज उसका आँखामा सुन्दरै सुन्दर देखा पर्छन्। आफ्नो नेप्टो नाक र सुलोचनाको सुरली जस्तो नाकमा त्यसले अमिल्दो केही देख्तिन। काननबालाका पत्ता जस्ता ठूला ठूला आँखा र आफ्ना चिनियानीका जस्ता चिम्से आँखालाई धनमती एकै दर्जामा राख्छे। अँ, न भन्दै यौटा कुरामा भने धनमती काननबालालाई जित्छे। बंगालीकी छोरी 'कानन' भन्दा 'बखते' राईकी छोरी 'धनमती' रंगमा निकै गोरी छ।

औ त्यो चेप्टो गोरो मुखमा धनमती आजकाल दस पैसे पाउडर दिनहूँ घस्छे। विद्यापति भन्ने फिल्म हेरेर धनमती गई, सरासर चोकबजारको "हरेक माल दस पैसा" का पसलमा। एक्ट्रेस हुनेले सिंगारपटार पट्टि ध्यान दिनु पर्छ। तसर्थ धनमतीले रूपसाधनका सामग्री बटुली। दस पैसाको पाउडर, दस पैसाको नङमा लाउने पालिस औ दसै पैसाको ओंठमा लिप्ने रंग-जम्मै "मेड इन जापान", किनेर धनमती घर फर्की।

दार्जिलिङ बजारको रक्सीको भट्टी नेर छ—धनमतीको बास। चार रुपियाँ मैनाको किराया तिरेर धनमती आमा सित यौटा कोठामा बस्छे। पिता बखते राई थियो यौटा कैचाका बङ्कमा चपरासी—मरेको चार पाँच वर्ष भयो। धनमतीकी आमा भट्टीमा पसल थापेर बस्छिन्। भुटेको आलु, माछाको तरकारी औ केरबको अचार तिनका पसलमा पाईन्छन्। रक्सियाहरू तिनका पसलनेर बसेर माछा अथवा अचार सित रक्सी खान्छन् औ दुवै आमा छोरीसित ठट्टा गर्छन्। दुवै आमा छोरी हँसिला मुखका छन्। रक्सियाहरू तिनका पसलमा झुम्मिन्छन्—मैलामा हरिया झिंगा झुम्मिए झैं। अथवा फुलमा मौरी थुप्रिए झैं भनौं।

धनमतीकी आमा लालबहादुर, तीस बत्तीस वर्षकी छन्। मुखमा अटुट हाँसो औ सिग्रेटको धुँवा। सबै सित मीठो बोल्ने। छोरी सित दसवटा ठिटाहरू जिस्कन्छन् तर तिनको केहि आपत्ति छैन। "चोखो गफ गर, बा। मुखको ठट्टा गर्दा दोष लाग्दैन। हात हालेर बस्नु पो हुन्न।" यही छ तिनको अर्ती छोरीलाई पनि औ रक्सी र प्रेममा डुबेका ठिटाहरूलाई पनि। "चोखो गफ" गर्ने ठिटाहरूको अतएव तिनका पसलमा घुइरो लागी रहन्छ। धनमती पनि रक्सियाहरूको एक एक ठट्टाको दस दस वटा तीखा तीखा जुवाप दिन्छे। त्यसका चटचटी काटने कुराहरूमा ठिटाहरु पीरो अचारको स्वाद पाएर खुशी हुन्छन्।

खुशी भएर कसैले धनमतीका गाला चिमोटी दिँदै अथवा चिउड़ो समाएर हल्लाइ दिँदै दुइ चार आना दिन्छन्। पैसा हात पारेर यस्ता मान्छेलाई धनमती भन्छे, "थुक्क मोरो। तेरा हातमा कीरा परोस्" कति चाहिं फेरि धनमतीका चाख लाग्दा कुरा लैनै तृप्त भएर जाने वेलामा धनमतीलाई कि ता आधा बोतल रक्सी कि ता एक दुइ आना पैसा दिइ राख्छन्। धनमती पनि यस्ताहरू सित शिष्ट भएर, नमस्कार गर्दै भन्छे, "भोलि पनि आए है दाज्यू-न मरी बाँचे, दैबले साँचे है।"

* * * *

नीलो फरिया सारी लाउने ढाँचामा लाएर, कानमा कुम सम्म पुग्ने गिल्टीका इयरिङ्ग झुण्डाएर धनमती आज चिटिक्क परेर पसलमा बसेकी छ एक्लै। आमा बिहानै देखि छाती दुख्यो भनेर ओछ्यान लागेकी छन्। मुख भरि पाउडर घसेर, गालामा लाली लाई, ओठमा रङ्ग पोतेर औ औंलाका जम्मै नङहरू पालिस गरेर, धनमती पसलमा बसेकी छ, हातमा यौटा हिन्दी पत्रिका लिएर। अलि अलि पढ्नु धनमतीलाई आउँछ। अघि बाबुले चपरासी काम गर्दा मिशन स्कूलमा त्यसले चार वर्ष सम्म पढ़ेकी थिई। कानका दुवै इयरिङ्ग हल्लाई हल्लाई धनमती ग्राहकहरू सित कुरा गर्छे। रक्सियाहरूका कंकलालाई पनि थिचेर त्यसको हाँसो हावामा उठ्छ औ उडछ। आलु अथवा अचार किन्न आएको मान्छेलाई मागेको थोक दिई सक्ने बित्तिकै धनमती फेरि पत्रिका उठाएर पन्ना पल्टाउन थाल्छे। पत्रिकामा सिनेमा संसारका सम्बन्धमा लेख मात्र छन् औ छन् अनेक भारतका नाम चलेका एक्टर र एक्ट्रेसहरूका नक्सा—सुलोचना, पनाक्षी रामा राव, शान्ता आप्टे, माधुरी, काननबाला, देविकारानी तथा मोतीलाल, याकूब, बिलमोरिया इत्यादि। यिनीहरू जस्तै एक जना भएर, सिनेमा संसारमा धूम मचाई दिने धनमतीको आजकाल दिनको जपना र रातको सपना भएको छ।

धनमती यसरी सिनेमाको स्वप्न-राज्यमा डुल्दै थिई, हठात् टाउको उठाएर हेर्दा यौटा मदीसे ठिटो पनि निहुरेर चित्र हेर्दै रहेको देखी। रक्सीको बोतल अघिल तिर राखेर, दुइ हतकेला घुँडामा भर गरेर त्यो मदीसे ठिटो

पनि खुबै ध्यान दिएर तसवीरहरु हेरी रहेको थियो। यसरी निर्धक भई निहुरी रहेको त्यो ठिटालाई देखेर धनमती रीसले भुतुक भई। औ त्यसलाई देख्ने बित्तिकै मुख छाड़ी, "थुक्क मोरो मुर्खुट्टा। तेरी आमालाई हेरेको ?"

मदीसेले हाँस्तै भन्यो, "किन रिसाई हालेकी, कान्छी। तिमीलाई सिनेमा मन पर्छ ?"

धनमतीले चिम्से आँखा चिम्म गर्दै भनी, "लागोस् कि न लागोस्। तँ अगुल्टेलाई के खाँचो ?"

मदीसेले पूर्ववत् दाँत देखाउँदै भन्यो, "होइन कान्छी, तिमीलाई एक्टर एक्ट्रेस सित भेट गर्ने इच्छा भए म भेट गराई दिन सक्छु।

धनमतीले त्यो कालो स्वाँठलाई एक चोटि टाउको देखि गोड़ा सम्म हेरी। पत्यारै लागेन र ओंठ लोव्र्याएर भनी, "तैं जस्तो लाटकोसेराले ? भो, पत्याइन।"

अगुल्टे स्वांठ यसरी उल्ली बिल्ली हुँदा पनि रिसाएन। पसल नेर थचक्क बसेर त्यसले एकै सासमा बोतल निखार्‌यो औ मुख पुछेर त्यसले भन्यो, "पत्याइनौ मलाई तिमीले, कान्छी नानी ? लौ ता सुन है, म तिमीलाई बताउँछु कुन कुन एक्टर र एक्ट्रेसको मैले चाकरी गरेको छु।" मदीसेले आकाश पाताल देखाई दियो, शान्ता आप्टे र देविका रानीका विषयमा जाने न जानेका, भए न भएका अनेक प्रकारका गफ लायो। औ सुन्दा सुन्दा धनमतीलाई अगुल्टे स्वांठ माथि निकै विश्वास लाग्यो।

( दुइ )

साता दिन भयो आमा ओछ्यानको ओछ्यानैमा छिन्। साता दिन भयो धनमतीले पसल एक्लै कुरेको औ साता दिन भयो त्यो मदीसे स्वांठले धनमतीको पसल धाएको।

मदीसे स्वांठको नाम सुन्दरलाल अरे। यो त्यसको असली नाम हो कि नक्कली, त्यो ता ईश्वरै जानुन्। सुन्दरलाल दिनहुँ धनमतीका पसल नेर बसेर बेसरी रक्सी खान्छ औ रक्सी खाँदै सिनेमाको कुरा गर्छ औ धनमती उर्फ मालती देविकाको असाध्य तारीफ गर्छ। चिनाजानी भएको तेस्रो दिनमा सुन्दरलालले भन्यो, "मालती देवी तपाईंका ती मनलाई पिघाली दिने ओंठमा लिपस्टिकले क्या खुबको काम गरे छ। तर रङ्ग ओंठका कुनामा अलि बेसी पोतिए छ।"

मालती देविकालाई आफ्नु सिपको ठुलो घमण्ड थियो। सुन्दरलालको त्यो समालोचना त्यसलाई मन परेन नाक खुमच्याएर त्यसले भनी, "तैं कलौटे मलाई सिकाउने ?" सुन्दरलालले भन्यो, "होइन कान्छी, त्यसो ता कैले हुन्थ्यो नै। तै पनि देविका रानीको मैले चाकरी गर्दा देखेको। लौ तिनको चित्र भएको पेज पल्टाऊन यो—हेर ता लौ। नक्सामा पनि क्या साफ उत्रेको छ। दुवै ओंठका बिच भागमा थ्याप्पै रङ्ग पोती दियेको। त्यहाँ देखि विस्तार विस्तार हल्का हल्का गर्दै ओंठका कुनामा बिल्ली गएको। यसैलाई भन्छन कामदेवको धनुष, बुझ्यौ ?"

धनमती उर्फ मालतीले यो पहिलो चोटि हार मानी। हार मानेर चुप लागी बसी। औ भोलि पल्ट सुन्दरलालले वर्णन गरे झैं काम देवको धनुष ओंठमा बनाई। सुन्दरलालका कुहकमा परी धनमतीको सिनेमा संसारमा पस्ने तयारी यसरी दिन दिनै हुन थाल्यो। केश अर्कै फेशनको कोर्न थाली। लाली गालामा मात्रै होइन कनपट सम्म लाउन लागी। चिहुँडोमा खोपी कालो यौटा तिलको चिनो। गलाको स्वर सुरिलो पारेर बोल्ने रात दिन चेष्टा गर्न लागी। हार्मोनियममा नित्य "सा रे ग म" अभ्यास गर्न लागी।

सुन्दरलालले आज सँधै भन्दा बढ़्ता रक्सी चढ़ायो। औ दुवै हातमा साइन्स राखेर त्यसले भन्यो, "मालती देवी, आज कलकत्ताको सरोज थिएटर का मालिक आएका छन्। मैले अघि तिनको पनि चाकरी गरेथें। बढ़े भलादमी। देवतै छन्, देवतै। चाकरी पनि त्यस्ताको गर्न पाए पो।"

धनमती के विचार गर्न लागी, केही बोलिन।

सुन्दरलालले अझै साहस बढ़ाएर भन्यो "हिंड न भरे ६ बजे बेलुका मालिक बसेका होटेलमा। के ठेकान तिम्रा भाग्य उघ्रेर तिनले तिमीलाई आफ्ना कम्पनीमा लिइ हाल्लान्।" धनमतीले त्यो दिन ता "थुक्क हरियो धम्मर धुसे। मलाई अर्काको घर घर जाने देखिस्" भनेर जान मानिन। सुन्दरलाल पनि "लौ ता, खुशी गर बा। मैले ता तिम्रै भलो चिताएर यो कुरा गरेको" भन्दै त्यस दिन डेरामा फर्क्यो। भोलि पल्ट सुन्दरलालले फेरि त्यही कुरा झिक्यो। धनमती जान राजी भई।

छ बजे बेलुका धनमती उर्फ मालती पाउडर र रङ्गले लदाबदी भएको अनुहार लिएर तथा रेशमको सारी पार्सी फेशनले लाएर सुन्दरलाल सित त्यसका मालिकका होटेल तिर लागी। बाहिर यौटा कोठामा त्यसलाई बसाएर सुन्दरलाल भित्री कोठामा पस्यो। धनमतीले चट्टै यौटा ब्लाउजभित्रबाट सानु ऐना झिकेर आफ्नो अनुहार त्यस्मा हेरी हेरेर आफ्नो अनुहार सित आफैं सन्तुष्ट भएर मुसुक्क हाँसी औ अलिकता पाउडर नाकमा थपेर त्यसले ऐना फेरि ब्लाउज भित्र छातीमा लुकाई।

भित्र सुन्दरलाललाई देखना साथ यौटा बंगाली बाबु कुर्शीबाट उठेर दुइ पाइला अघि सर्‌यो। सुन्दरलालले दुवै हात जोड़ी बंगाली बाबुलाई प्रणाम गर्‌यो। बंगालीले सोध्यो, "कसो सुन्दर, शिकार धरापमा पर्‌यो ?"

सुन्दरलालले झन निहुरेर प्रणाम गर्दै भन्यो, "हजुरको अधम सेवकका हातबाट अझ सम्म यौटै शिकार पनि उम्केको छैन। अघि यहाँको निगाह।

बंगालीले पान चपाउँदै भन्यो, "लौ न ता सुन्दर, तेरी पहाड़की देवीजीलाई मेरा मन्दिरमा हाजिर गर्। अँ—अन्त हेर्। पेले पचास रुपियाँ लै जा। फेरि हेर्‌लैा।

## जूलाई १९४० मा गोर्खा दुःख निवारक सम्मेलनले तल लेखे बमोजिम कार्य्य गऱ्यो

२-७-४० नेपालवाट आएकी यौटी महिला तिनको यौटा सानु नानी, कांकिबोंग बस्तीबाट आएका तीन जना सज्जन र पूलबजारबाट आएका दुइ जना सज्जनलाई बास दियो ।
३-७-४० जज बजारदेखि यौटा रोगीलाई बोकेर रेलवे स्टेशन सम्म पुर्‍यायो ।
४-७-४० जितेनझोड़ाको यौटा रोगीलाई अस्पताल पुर्‍यायो । डी० बिल्डिगमा बेवारिसी भई मरेकी यौटी महिलाको अन्तिम संस्कार गऱ्यो । पूलबजारका दुइ जना सज्जनलाई बास दियो ।
५-७-४० अस्पतालमा मरेकी, नागरीकमानकी यौटी राइनी महिलाको अन्तिम संस्कार गऱ्यो ।
६-७-४० पूलबजारका दुइ सज्जनलाई बास दियो । अस्पतालदेखि खारेज भएका एक जना मानिसलाई तिनका घर ( सुनदह ) सम्म जाने खर्च दियो ।
१०-७-४० भिक्टोरिया अस्पताल र थाइसिस अस्पतालमा मरेका दुइ लाशको अन्तिम् संस्कार गऱ्यो ।
११-७-४० यौटा मृत लाशको अन्तिम संस्कार गऱ्यो ।
१३-७-४० पुसिमबोंग टी इस्टेटबाट दुइ जना लोगने स्वास्नी सुकेनाशले थलिएर अस्पतालमा आएका थिए; दुवै जनाको एकै दिन देहान्त भयो । सम्मेलनले दुवै लाशको अन्तिम संस्कार गऱ्यो ।
१४-७-४० यौटा रोगीलाई पाउण्ड रोडदेखि अस्पताल पुर्‍यायो ।
१५-७-४० यौटा वेवारिशे लाशको अन्तिम् संस्कार गऱ्यो ।
१७-७-४० यौटा रोगीलाई बाडेल रोडदेखि भोटे बस्ती पुर्‍यायो ।
१८-७-४० सम्मेलनमा दुखेका दुइ जना अनाथ बालकहरुलाई अस्पताल पुर्‍यायो ।
२२-७-४० यौटा रोगीलाई बजारदेखि अस्पताल पुर्‍यायो ।
२४-७-४० लोधोमा बस्तीका दुइ सज्जनहरुलाई बास दियो ।
२५-७-४० दुइ वेवारिसी भई मरेका लाशको संस्कार गऱ्यो ।
२७-७-४० यौटी व्यथालागेकी महिलालाई चाँदमारीदेखि अस्पताल पुर्‍यायो ।
२८-७-४० यौटा रोगीलाई राजबाड़ीदेखि अस्पताल पुर्‍यायो । यौटा लोपचुमा मारिएको लाशको अन्तिम संस्कार गऱ्यो । यो लाश कत्ति दिन पछि फेला पारी सर्कारी मानिसहरूले अस्पतालमा जाँच गराउनाकालागि ल्यायेका थिए । शरीर कीराले व्याप्त थियो । दुर्गन्धले छेउमा जान सम्म कठिन पर्‍यो । भयंकर पानीमा पनि सम्मेलनले उक्त लाशको अन्तिम संस्कार विधिपूर्वक गऱ्यो ।

हालमा सम्मेलनका अनाथालयमा १५ जना अनाथहरू छन् । तिनी मध्ये दुइवटी बालिका र चारजना बालकहरू स्कूल जान्छन् । सबैको पढ्नामा खूबै रुची छ ।

सम्मेलनका वाचनालयमा दैनिक स्टेट्स्म्यान, अमृतबाजार पत्रिका, हिन्दी विश्वमित्र र साप्ताहिक विश्वमित्र झिकाइएका छन् । विना रोक टोक धेरै जना आएर पढ्छन् ।

---

यो पत्रिका संचालनका निम्ति तल लेखे बमोजिम दान पाइयो । दाताहरू प्रति धन्यवाद निवेदन गरिन्छ ।

श्रीमती के० बी० गुरुंग ५) श्रीमोतीचन्द प्रधान ५) श्रीपद्म प्रसाद प्रधान २) श्री के० बी० सिंह १) श्री आर० एन० सिंह ५) श्री आर० बी० लामा १) श्री एच० डी० लामा १) श्रीशिवलाल प्रधान १) श्रीपारसमणि प्रधान १०) श्री पी० बी० गुरुंग १) श्री डी० बी० सुब्बा १) श्री एच० एन० प्रधान १) श्री एन० एल० कालिकोटे १) श्री सी० बी० घले १) श्रीपंचबीर लामा १) श्री बी० के० एस० गहतराज १) श्री डी० बी० मुखिया १) श्री आर० एल० सिंह १) श्री आर० बी० गुरुंग १) श्री केशर बहादुर छेत्रि १) श्री भप्पु प्रधान १) श्री कर्ता सिंह लामा १) ।

---

## खोजीका नियम

( १ ) यो पत्रिका हाललाई महीनामा एकपल्ट निस्कने छ ।
( २ ) यो पत्रका निम्ति आएका लेख, खबर आदि काटछाँट गर्ने पूरा अधिकार सम्पादकलाई हुने छ ।
( ३ ) कुनै लेख स्वीकार गर्ने सम्पादकको पूर्ण अधिकार छ ।
( ४ ) लेख पठाउँदा कागजको एकापट्टि मात्र ठाउँ राखेर लेखी पठाउनु पर्छ । नेपाली भाषाका शब्द लेखाइ एकनास गराउनका निम्ति "नेपाली भाषा प्रकाशिनी समिति" ले ठहराए बमोजिम शब्दका मात्राहरू लेख्नु असल हो ।
( ५ ) व्यक्तिगत झगडा संग यो पत्रको केही सम्बन्ध हुने छैन ।
( ६ ) लेखकको मत सम्पादकको मत होइन ।
( ७ ) न छापिएका लेखहरू फिर्ता हुने छैनन् । यसर्थ लेखकहरूले कापी राखेर मात्र लेख, कविताहरू पठाउनु पर्छ ।
( ८ ) मोल—प्रति संख्या एक आना, डाकद्वारा—छ पैसा, वार्षिक एक रुपियां ( कम्पनी ) ।

पाइने ठेगाना—

म्यानेजर, "खोजी",

गोर्खा दुःख निवारक सम्मेलन, दार्जिलिङ ।

मुद्रक—माधव विष्णु पराडकर, ज्ञानमंडल यन्त्रालय, काशी । प्रकाशक—श्री जे० बी० थापा, गोर्खा दुःख निवारक सम्मेलन, दार्जिलिङ ।